





# ललिता निवास क्याम्पको सरकारी जग्गा हिनामिना प्रकरण सम्बन्धी अनुसन्धान प्रगति विवरण

के.अ.ब्यूरो, महाराजगञ्ज, काठमाडौ

# भिम शम्सेर ज.ब.रा.
(१९२२-१९८९)

- छोरा
  प्रकाश शम्सेर ज.ब.रा.
- छोरा
  पदम शम्सेर ज.ब.रा.
  (१९३९-२०१८)
- छोरा
  हिरण्य शम्सेर ज.ब.रा.
  (१९४५-२०१२)
  → श्रीमती
  सोम कुमारी राणा
  (१९४८-१९९०)
  - छोरा
    सुवर्ण शम्सेर ज.ब.रा.
    (१९६७-२०३४)
    — श्रीमती
    श्वेत प्रभा राणा
    (१९७१-२०३७)
    - छोरा
      कनक शम्सेर ज.ब.रा.
      (१९८८-२०४३)
      → श्रीमती
      सुनिति राणा
      (१९८९-२०७०)
      - छोरा
        हेमाद्री शम्सेर
        (जन्म २०१५)
    - छोरा
      कन्चन शम्सेर ज.ब.रा.
      (१९९१-२०३९)
      → श्रीमती
      शैलजा राणा
      (१९९६-२०६१)
      - छोरा
        हेमेन शम्सेर ज.ब.रा.
        (२०१५-२०६४)
      - छोरा
        हाटक शम्सेर ज.ब.रा.
        (जन्म २०१६)
    - छोरा
      रूकम शम्सेर ज.ब.रा.
      (जन्म १९९३)
      - छोरी
        रति राणा (शाह)
        (जन्म २०१५)
- छोरा
  राम शम्सेर ज.ब.रा.



# पृष्ठभूमि

*राणाहरुको कुलदेबी "**ललिता देबी**" को नामबाट भीम शमशेर ज.ब.रा.ले प्राप्त गरेको उक्त जग्गा समेतको निवासको नामाकरण **ललिता निवास रहन गएको ।***

**१९८७ को लालमोहर**

भीम शमशेर ज.ब.रा.ले बि.सं. १९८७ को लालमोहर बिर्ताबाट विभिन्न गुठी र व्यक्तिबाट २८७ रोपनी ८ आना २ पैसा जग्गा प्राप्त गरेको देखिएको । सोही जग्गा फिल्डमा नाप गर्दा २९९-९-३-० रोपनी पुगेको

**२०१७ को वण्डापत्र**

२०१७/०३/३१ मा सुवर्ण शमशेर ज.ब.रा.ले बकस-पत्र मार्फत ३ छोरालाई ५७/५७, पत्नी स्वेत प्रभालाई ५८ रोपनी र बाँकी ५८ रोपनी आफ्नो भागमा राखी बकस-पत्र लेखिदिएको । (२८७ रोपनीलाई वण्डा गरेको)

**जग्गा रोक्का तथा जफत**

२०१८/११/१९ मा सुवर्ण शमसेर समेत ७६ जनाको सम्पत्ति रोक्का राख्ने सूचना जारी

**गृह मन्त्रालयको आदेश**

मिति २०१८/१२/१९ को सुवर्ण शमसेर समेतका ३० जनाको सम्पति जफत गर्ने



# जग्गा रोक्का तथा जफत

- मिति २०१८/११/१९ गतेको राजपत्रले सुवर्ण शमशेर समेत **७६ जनाको सम्पत्ति रोक्का राखी** सम्बन्धितलाई नेपाल अधिराज्यमा प्रवेश गरी आ-आफ्नो जिल्लाको घरद्वारमा आई बसोबास गर्न अन्यथा सम्पत्ति जफत हुने सूचना जारी गरेको ।
- मिति २०१८/१२/१९ गतेको गृह मन्त्रालयको पत्रले नेपाल नआएका सुवर्ण शमशेर समेतका **३० जनाको सम्पत्ति जफत गरी** जफत गरेको लगत १ प्रति गृह मन्त्रालयमा पठाउनु भनी सबै बडा हाकिम तथा मजिस्ट्रेटहरुलाई आदेश गरेको ।



# घर, जग्गा अधिग्रहण सम्बन्धी सूचना

जग्गा प्राप्ति ऐन, २०१८ को दफा ७(१) बमोजिम मिति २०२१।८।१५ गतेको तत्कालीन श्री ५ को सरकार (म.प.) को निर्णय अनुसार उचित क्षतिपूर्ति दिई सार्वजनिक कामको निमित्त निम्न ६ वटा राणाकालीन दरबारहरु अधिग्रहण गर्ने निर्णय भएको । (नेपाल गजेटमा भाग ३ खण्ड १४, अतिरिक्ताङ्क २३, मिति २०२१।८।१७)

(अ) महाविर भवन, नक्साल: १५४-४-२-० सो जग्गामा रहेको सबै घरहरू (प्र.प्र.का. रहेको जग्गा)

(आ) हरिहर भवन, पुल्चोक: २४०–१–२–० जग्गा र जग्गामा रहेका सबै घरहरू (हाल मन्त्री निवास)

(इ) सीता भवन, नक्साल: ११९–१२–३–० जग्गा र सोमा रहेका सबै घरहरू (हालको बाल मन्दिर)

(ई) लक्ष्मी निवास, महाराजगञ्ज: २५८–१४–०–० जग्गा र सोमा रहेको सबै घरहरु (भैरवनाथ गण)

(उ) बबरमहल कुरिया गाउँ: २५३–३–३–१ जग्गा मध्ये भरत शमशेरको भागको घर र जग्गा १२–१२–२–० श्री ५ को सरकार लागिसकेकाले सो कट्टा गरी बाँकी रोपनी



# अधिग्रहण एवं क्षतिपूर्ति सम्बन्धी सूचना

- मिति २०२१/०९/०६,७,८,९ र १० गतेको गोरखापत्र दैनिकमा “जग्गाको क्षतिपूर्ति लिन आउनु” भन्ने मेजिष्ट्रेट अफिस, काठमाण्डौंको सूचना प्रकाशित भई जग्गा प्राप्ति ऐन २०१८ को दफा १० को व्यवस्था अनुसार टाँसपूर्जी समेत भएको ।
- मिति २०२२।०२।२४ गतेको गोरखापत्र दैनिकमा प्रकाशन भएको मेजिष्ट्रेट अफिस, काठमाण्डौंको “ घर कम्पाउण्ड जग्गाहरु कब्जा लिएको सूचना ” (जग्गा प्राप्ति ऐन, २०१८ को दफा १६ अनुसार) मा ललिता निवास क्षेत्रको स्वेतप्रभा, कनक शमशेर, रुक्म शमशेर, शैलजा, हेमन शमशेर र हाटक शमशेर समेतका नाउँको जग्गा रोपनी २७२–१५–२–२.५ को हाल नाप ठहर रोपनी २८४–१४–३–० जग्गा उल्लेख भएको । सो समयमा पनि यसअघि जफत गरिएको १४–११–०–० बाहेक भन्ने उल्लेख भएको ।
- उपरोक्त तथ्य २०२१ सालको लगतबाट समेत देखिन आएको ।



# अधिग्रहण एवं क्षतिपूर्ति सम्बन्धी सूचना

क्रमशः...

- क्षतिपूर्ति वितरण भइरहेको हुँदा क्षतिपूर्ति लिन बाँकी भएका व्यक्तिहरूले सबुद प्रमाण लिई शीघ्र लिन आउनुहोला भन्ने व्यहोराको अञ्चलाधीशको अफिस, बागमती अञ्चलको मिति २०२३।०६।०७ गते गोरखापत्रमा सूचना प्रकाशित ।
- मिति २०२५/१०/०८ गतेको गोरखापत्रमा "जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम श्री ५ को सरकारले अधिग्रहण गरेको मिति २०२१।०८।१७ को नेपाल गजेटमा प्रकाशित सूचना बमोजिम मुआब्जा एवं क्षतिपूर्ति निर्धारण गरेपश्चात् सीता भवनका केही व्यक्तिहरुले मुआब्जा लिन नआएको अवस्थामा लामो समयसम्म राखी राख्न मनासिव नहुने भएकाले त्यस्तो मुआब्जा रकम भूमी प्रशासन कार्यालयको धरौटी खातामा जम्मा गरी दिने अन्तिम सूचना" प्रकाशित भएको ।



# अधिग्रहण भएको जग्गा समरजंग कम्पनीलाई जिम्मा

- अंचलाधीश कार्यालय बागमतीले मिति २०२३/०६/२३ गते सरकारी सम्पत्तिको अभिलेख राख्ने, संरक्षण गर्ने समेतको जिम्मेवारी भएको कार्यालय समरजंग कम्पनीलाई ललिता निवास क्याम्पभित्रको अधिग्रहण भएको जग्गा मोही हक नमागेका निबेदक किसान ५७ जनालाई जग्गा कमाउन दिई कुत (कुत तोकी) बुझ्न पत्रचार गरेको ।
- २०२३ सालमा भएको नापीको फिल्ड बुकमा "यो जग्गा अञ्चल आदेश मार्फत श्री ५ को सरकारलाई अधियाँमा कुत बुझाई कमाई आएको" भनी उल्लेख गरेको ।
- जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने ।



# व्यक्तिका नाममा जग्गा दर्ता -२०३६

- कनक शमशेरले आफ्नो क्याम्पमा रहेको गोठ, तबेला सहित आठ रोपनी जग्गा बसोबास गर्नका लागि राजा समक्ष निवेदन गरेकोमा तत्कालीन श्री ५ को सरकारको मिति २०२२।०४।१० मा ८ रोपनी जग्गा दिने निर्णय भएको ।
- मेजिष्ट्रेट अफिस, काठमाडौंको मिति २०२२।०४।२० को पत्र र बागमती अञ्चलाधीश कार्यालयको च.नं. १४९६ मिति २०२६।०१।२९ को पत्रमा समेत सरकारले खरिद गरेको मुल्य रु.४५,८८२।६९ लिई जग्गा फिर्ता गर्ने निर्णय भएको व्यहोरा उल्लेख ।
- मिति २०३६/७/२३ मा वडा २३ 'क्ष' बाट ८ रोपनी कनक शमशेरको नाममा नामसारी ।
- राजाको हु. प्र. र श्री ५ को सरकारको मिति २०३६/०२/२७ को निर्णय समेतबाट श्री पविता देवीलाई १ रोपनी, दामोदर प्रसाद उपाध्यायलाई १ रोपनी र कुमार



# अधिग्रहणको जग्गा गुठी कायम- २०४२

- मा.पो.का. डिल्लीबजारको तत्कालीन प्र.मा.अ. धर्म प्रसाद गौतमले ललिता निवासको २०४२।३।१६ मा ३४ कित्ता करिब ५३ रोपनी जग्गाको श्रेष्तामा गुठी जनाएको ।
- २०४४।१०।२२ मा बागमती अञ्चलाधीश कार्यालयले मा.पो.का. डिल्लीबजारलाई सरकारले अधिग्रहण गरेको उक्त जग्गा सरकारको नाममा दर्ता गर्न पत्राचार गरेको तर कार्यान्वयन नभएको ।



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

- श्री ५ को सरकार, मन्त्रिपरिषदबाट २०४७ सालमा भएको निर्णयलाई अपब्याख्या गरी तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको जग्गालाई जफत गरेको भनी २०४९।०७।२५ गते र २०४९।०९।२३ गते मालपोत कार्यालय, डिल्लीबजारले मिसिल नं. १०२४ र १०२५ बाट सुबर्ण शमशेर ज.ब.रा.का हकवालाहरु सुनिती राणा, शैलजा राणा, रुक्म शमशेर ज.ब.रा. समेतका नाममा ११२-४-१-० रोपनी जग्गा हक हस्तान्तरण गरेको ।
- जग्गा फिर्ता गर्दा  श्री ५ को सरकार मन्त्रिपरिषदबाट भएको निर्णय बमोजिम छानबिन समेत नगरेको र हदबन्दीको टुङ्गो समेत नलगाएको ।
- सुनिती राणा समेतको नाममा जग्गा दर्ता भए पश्चात तत्कालीन प्रमुख मालपोत अधिकृत **कलाधर देउजा समेत**ले आफ्नो परिवार र आफन्त समेतको नाममा हालै देखिको बकसपत्रबाट २२-१०-०-० रोपनी जग्गा प्राप्त गरेको ।



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- कनक शमशेरले उक्त जग्गा सरकारी हो भनी हकदावी छोडेको कागजात संलग्न मिसिल निजका छोरा हेमाद्री शमशेर राणाले २०५७।०३।२१ मा **नक्कल बुझि** लगेको
- २०३६।०७।२३ मा कनक शमशेरले हक दावी छाडेको साविक नगर २३ (स) कि.नं. २६ को क्षेत्रफल ०-१२-२-० रोपनी जग्गा सुनिती राणाले आफ्नो स्वामित्वको दर्ता हुन बाँकी जग्गा भनी २०५८।०२।०८ मा छुट जग्गा दर्ताको **निवेदन** दिई मिति २०६२।०२।०३ मा छुट जग्गा दर्ता समितीको निर्णयबाट प्राप्त गरेको ।
- उल्लेखित प्रकृया पुरा गर्न का.म.पा., ४ नं. वडा कार्यालयबाट झुठो व्यहोराको सिफारिस तथा राम कुमार सुवेदी र शोभाकान्त ढकाल साक्षी बसेको सर्जमिन मुचुल्का समेत पेश गरेको ।
- सुनिती राणाको नाममा दर्ता कायम रहेको जग्गाबाट 0-१२-0-0 रोपनी जग्गा राम कुमार सुवेदी, शोभाकान्त ढकाल र मिन बहादुर गुरुङ समेतले संयुक्त नाममा प्राप्त गरी उक्त जग्गाबाट साविकमा निजहरुले किर्ते व्यहोराबाट प्राप्त गरेको जग्गामा पुग्ने पहुँच मार्ग निर्माण गरेको ।
- तत्कालीन श्री ५ को सरकारले प्रचलित कानून बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा गुठीको भएकोले बिभिन्न २१ कित्ताको करिब ३४ रोपनी जग्गा गुठीको नाममा दर्ता कायम गरी मोही समेत कायम गराई पाउँ भनी २०५८ साल देखि बिभिन्न मितिमा गुठी संस्थानमा मोही भनिएका व्यक्तिहरुको वारेस बसी



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- प्रधानमन्त्री निवास परिसर विस्तार सम्बन्धमा नेपाल सरकार, समरजंग कम्पनीको नाममा (मोही जनिएको) ललिता निवासको क्याम्पक्षेत्रको चारकिल्ला भित्र जम्मा क्षेत्रफल २७-७-२-१ रोपनी सरकारी जग्गा मध्ये मोही भाग कट्टा गरी बाँकी रहने १३-११-३-०.५ जग्गा र साबिक बाटो तथा राजकुलो समेतको क्षेत्रफल ०-१५-०-२ रोपनी गरी जम्मा क्षेत्रफल १४-१०-३-२.५ रोपनी अनुसूची १ मा उल्लेख भए बमोजिमका जग्गा मिलान गरी नक्सा बमोजिम दक्षिणतर्फ (प्रधानमन्त्री निवास क्षेत्र परिसर) विस्तार गर्ने भनी भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट गुरुयोजना तयार भएको ।
- गुरुयोजना तयार पार्ने क्रममा मिति २०६६/१०/१०, **च.नं.** ९००९ को मालपोत कार्यालयले पठाएको पत्रमा सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम भएको जग्गा भनी मोहीहरुको नामावली उल्लेख गरी [illegible] व्यहोराको पत्राचार भएको । सम्मानित सर्वोच्च अदालतको उक्त



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

क्रमशः...

- नेपाल सरकारको नाममा श्रेस्ता कायम रहेको जग्गाहरुको साविक २ नं. अनुसूची अनुसार कायम रहेको मोहीको विवरण यसै साथ पठाईएको र यसै सम्बन्धमा सम्मानित सर्वोच्च अदालतबाट भएको फैसला कार्यान्वयन गरी पाउँ भनी १४ जना मोही तथा तिनका हकदारहरुले निवेदन माग गरी कारवाही चलिरहेको भनी भूमी सुधार कार्यालयको **च.नं.** ५१४०, मिति २०६६।१०।१५ को पत्रमा मोहीको नामावली समेत कार्यालयको अभिलेख भन्दा फरक पारी (कीर्ते गरी) सरकारी जग्गा हडप्ने उद्देश्यले कीर्ते पत्र तयार पारी भवन निर्माण सम्भार डिभिजन कार्यालयलाई पत्र पठाएको ।
- नापी कार्यालय डिल्लीबजारका कर्मचारीहरुले ललिता निवास क्याम्पभित्रको सरकारी जग्गामा प्र.म. निवासको दक्षिण तर्फ विस्तारको लागि र त्यसको दक्षिण तर्फ ८ मि. बाटो विस्तारको लागि रेखाङ्कन गरी मोही भएको सरकारी जग्गाको कुल क्षे.फ. २७-७-२-१, मोही भएको जग्गाको आधा क्षे.फ. १३-११-३-१/२ भन्ने समेत व्यहोरा राखी सरकारी सार्वजनिक जग्गामा मोही रहेको उल्लेख गरी भवन



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- मिति २०६६/१२/१८ गते भवन निर्माण सम्भार डिभिजन कार्यालय काठमाण्डौंबाट टिप्पणी उठेको । उक्त टिप्पणी प्रस्ताव साथ सरकारी जग्गामा मोही रहेको र मोही भाग दिनु पर्ने भन्ने समेतको झुठ्ठा र कीर्ते व्यहोरा उल्लेख भई जग्गा कित्ता समेतको विवरण भएको अनुसूची संलग्न रहेको ।
- उक्त टिप्पणी तहगतरुपमा पेश भई उप प्रधानमन्त्री तथा भौतिक योजना तथा निर्माण मन्त्रालयका तत्कालीन मन्त्री विजय कुमार गच्छदारबाट मिति २०६६/१२/१९ गते सदर भई नेपाल सरकार (म.प.) बाट मिति २०६६/१२/२९ गते निर्णय भएको ।
- सम्मानननीय प्रधानमन्त्री निवासको दक्षिण तर्फ परिसर विस्तार क्षेत्र बाहिर परेको जग्गाको मोहीको हकमा तत् तत् जग्गा (कित्ता) मध्ये आधा जग्गा मोहीले रोजे तर्फको जग्गाको नेपाल सरकार (समरजंग कम्पनी वा राजकुलो वा बाटो) को नामबाट सम्बन्धित मोहीको नाममा दाखिल खारेज गर्ने र सम्माननीय प्रधानमन्त्री निवासको दक्षिण तर्फ परिसर विस्तार क्षेत्र भित्र परेका जग्गाको मोहीको हकमा निजले मोही बापत पाउने आधा क्षेत्रफल बराबरको जग्गा उक्त परिसर विस्तार क्षेत्र बाहिरको जग्गाको मोहीको नाममा दाखिल खारेज गरी बाँकी रहेको जग्गा मध्ये नेपाल सरकार (समरजंग कम्पनी वा राजकुलो वा बाटो) को नामबाट त्यस्ता मोहीको



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- नेपाल सरकार (म.प.) मा निर्णयार्थ पेश भएको प्रस्तावको ३ पाने सुरु टिप्पणीको दोस्रो पानाको ३ नं. बुँदाको चौँथो हरफमा सह सचिव जित बहादुर थापाले टिप्पणी सदर गरी हस्ताक्षर गर्दा नभएको व्यहोरा सुरु टिप्पणी उठाउने भूमि व्यवस्था तथा सहकारी मत्रालयका उप सचिव हुपेन्द्रमणी के. सि. ले पछिबाट "**मालपोत कार्यालय डिल्लीबजारबाट**" भन्ने व्यहोरा थप गरेको (फलस्वरुप कानूनत: भूमि सुधार कार्यालयको जिम्मेवारी रहेको कार्य मालपोत कार्यालयबाट कार्यान्वयन गर्ने गरी निर्णय भएको) । उक्त टिप्पणी तहगतरुपमा मिति २०६७/१/२७ गते माननीय मन्त्रीबाट सदर भई नेपाल सरकार (म.प.) बाट मिति २०६७/१/३१ गते निर्णय भएको ।
- मिति २०६६/१२/२९ र मिति २०६७/१/३१ गते म.प.बाट भएको निर्णयको अनुसूची १,२ र ३ मा मानवीय गल्तीले केही भूल भएकोले उक्त भूल सुधार गर्नको लागि भनी अनुसूची १ मा सि.नं. ३६ मा कि.नं. २११ क्षे. ०-३-०-२ रोपनी र सि.नं. ३७ मा कि.नं. ३१२ क्षे. ०-२-२-२ रोपनी छुट भएको भनी कीर्ते भइरहेको प्रस्तावमा थप गरी थप कीर्ते गरी



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- तत्कालीन श्री ५ को सरकारले नेपाल गजेट र गोरखापत्रमा समेत पटक पटक सूचना प्रकाशित गरी मुआब्जा दिई रितपुर्वक अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही नलाग्ने भएता पनि "सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० गतेको फैसला समेतलाई अपव्याख्या गरी उल्लेखित जग्गाहरुमा आफू मोही भएकाले नेपाल सरकार (म.प.)को मिति २०६६/१२/२९ को निर्णय बमोजिम मोहीयानी हक बापतको जग्गा पाउँ" भनी मिति २०६७/३/८ र २०६७/३/९ गते समेतमा श्रीकृष्ण महर्जन समेतका १२ जना मोहीहरुले **मालपोत कार्यालय डिल्लीबजारमा** किर्ते र फरक व्यहोराको निवेदन दिएको ।
- निवेदन साथ का.म.पा ४ न.वडा का अध्यक्ष रत्नप्रसाद जोशीले मिति २०५९/३/३२ गते च.नं. १९८२ गतेको पत्रबाट नगर २३ ह कि.नं.१२, कि.न. ४०, १५ र २४, कि.न. २२, कि.न. २५, २३ क्ष कि.न. ४८ र ७६, कि.न. ६८ र ६९, कि.न. ७३, कि.न. ७८ समेतका निवेदक मोहीहरुले नै जोत भोग गरी आएको बुझिएको भनी गरेको झुठ्ठा र कीर्ते व्यहोराको जोत भोग सिफारिस पेश गरेको ।
- देव नारायण महर्जन समेतले नेपाल सरकार (म.प.) को मिति २०६६/१२/२९ को निर्णय बमोजिम मोही हक बापतको जग्गा पाउँ भनी मा.पो.का. डिल्लिबजार...



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- मोही भनिएका व्यक्तिहरुको नाममा जग्गा नामसारी हुने बित्तिकै सो जग्गाहरु प्रतिवादी **रामकुमार सुवेदी**, **शोभाकान्त ढकाल** र निजको परिवारका सदस्यहरुको नाममा गएबाट प्रतिवादी **रामकुमार सुवेदी** समेतको योजनामा मोही भनिएका व्यक्तिहरु तथा विभिन्न कार्यालयका कर्मचारीहरु समेतको मिलेमतो र संलग्नतामा जिम्मेवारी बाँडफाड गरी झुठो र फरक व्यहोराको कीर्ते तथ्यांक प्रस्तुत गरी कीर्ते व्यहोराको पत्र समेत तयार पारी पेश गरी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मस्यौट गरेको ।



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- बालुवाटार स्थित सम्माननीय प्रधानमन्त्रीज्यू लगायत विशिष्ट व्यक्तिहरुको निवास परिसर विस्तार गर्ने भनी नेपाल सरकारको निर्णय भए पश्चात जग्गा सट्टा पट्टाको नाममा नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता रहेको जग्गा, सार्वजनिक बाटो र राजकुलो समेतमा मालपोत कार्यालय, डिल्लीबजारले २०६७।०८।१६ मा मि.नं. ५५ बाट मोही भनिएका व्यक्तिहरू र सट्टापट्टा शोधभर्नाको लागि व्यक्तिको नाममा जग्गा दर्ता गर्ने गरी निर्णय गरेको ।
- यसमा प्रधानमन्त्री निवास बाटो तथा व्यक्तिका नाममा कायम रहने तपसिलमा उल्लेख भएको जग्गा मिति २०६७/८/१६ गतेको टिप्पणीमा केही फरक पर्न गई त्रुटी भएकोले तपसिल बमोजिम कायम हुन भन्ने समेत व्यहोराको संशोधन प्रस्तावको टिप्पणी मिति २०६७/१२/१३ गते मालपोत कार्यालय डिल्लीबजारबाट उठी मिति २०६७/१२/१४ गते सदर भई मि.नं. ५५ लाई संशोधन गरी पुनः केही किता जग्गाहरु व्यक्ति विशेषको नाममा गएको ।



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

क्रमशः...

- का.म.पा ४ वालुवाटार स्थित विशिष्ट ब्यक्तिहरुको निवास परिसर बिस्तार सम्वन्धमा मिति २०६६/१२/१८ समेतका विभिन्न मितिमा उठेको टिप्पणीमा परिसर बिस्तार गर्दा बिस्तारित क्षेत्रमा पर्ने अनुसूची २ मा उल्लेख भए बमोजिमका ब्यक्तिका नाममा दर्ता रहेको जग्गाको सोधभर्ना तथा सट्टापट्टा गर्न आवश्यक ब्यवस्था मिलाउने उल्लेख भएको ।
- नेपाल सरकार(मन्त्रिपरिषद) बाट भएको निर्णयमा परेको उल्लेखित बुँदालाई आड हाली साबिक देखिनै प्रधानमन्त्री निवास परिसर भित्र रहेको साबिक २३ क्ष को कि.नं.१८ र २३ ह को कि.नं.८ का जग्गाहरु बिस्तारित क्षेत्रमा परेको भनी सोको सोधभर्ना बापत भनी जग्गा दिएको ।
- साबिक २३ ह कि.नं.८ को २०६०/०९/१५ गते हाल साबिक गरी मिति २०६०/०१/२५ गते र.नं. १२८२४ बाट उमा कुमारी ढकाल्नी र माधबी सुवेदीको



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- साबिक २३क्ष कि.न. १८ को जग्गा २०६०/०९/१८ गते हालसाबिक भई २०६०/१२/२५ गते र.नं.१२८३७ बाट चमेली श्रेष्ठ समेत ६ जनाको संयुक्त नाममा दर्ता कायम भएको ।
- प्रधानमन्त्री निवास परिसर बिस्तारको नाममा साबिक देखिनै प्रधानमन्त्री निवास परिसर भित्र रहेको कि.न. १८ को सोधभर्ना बापत चमेली श्रेष्ठ समेतले सिट नं. १०२५-१५ को कि.नं.६१७,२१७,२१३,२१९, सिट नं. १०२५-१९ को कि.नं. ६ र ७, सिट नं. १०२५-२० को कि.नं.१२८ को जग्गा प्राप्त गरेको ।
- कि.नं.८ को सोधभर्ना बापत DLF डेभलपर्सले सिट नं. १०२५-१५ को कि.नं. २३१, २९६, २७३,२६८, ६१२,६२२, ६४५, ६४६, १९३, ६२६, ६२८, १३९, १४०, १४१, ३५, ३८, ४१, ४३ समेतका जग्गाहरु प्राप्त गरेको ।
- DLF डेभलपर्स र भाटभटेनी डेभलपमेण्ट कम्पनी समेतले चर्चेको जग्गामा जान





# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- मिति २०६६/१२/२९ गते नेपाल सरकार ( मन्त्री परिषद ) बाट निर्णय हुने क्रममा " उक्त निवासको दक्षिण तर्फ गुठी संस्थानको नाममा कुनै जग्गा रहेको पाईएन" भन्ने व्यहोरा उल्लेख भएकोमा प्र.म. निवास विस्तार पश्चात बाँकी रहेको नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको ४-१४-३-२ रोपनी जग्गा २०७०/१/१७ गते पशुपती टिकिंछा गुठीको नाममा दर्ता गरी तिर्थमाया महर्जन समेतलाई मोही कायम गरेको ।
- यसरी झुठ्ठा र कीर्ते व्यहोराको पत्र लगायतका कागजात तयार पारी सोही कागजातको आधारमा प्राप्त गरेका अधिकांश कित्ता जग्गा हालसम्म पनि **राम कुमार सुवेदी**, **शोभाकान्त ढकाल**, मीन बहादुर गुरुङ र निजको परिवारका सदस्यहरु, भाटभटेनी डेभलपमेण्ट कम्पनी, डिएलएफ डेभलपर्सका संचालक कैलाश चन्द्र गोयल, श्रवण कुमार गोयल, शिव रतन शारदा, संदिप कुमार सारदा र निजका परिवारका सदस्यहरु समेतको नाममा कायम रहेको देखिएबाट शुरु देखि उक्त जग्गाको Benificial owner निजहरु नै रहेको देखिएको ।
- प्रस्तुत कसूरको वारदातको अपराध कार्यविधि (Modus Operandi)हेर्दा प्रतिवादीहरु धेरै जनाको समूह भई सामूहिक रुपमा गरेको कार्यबाट अपराधले पूर्णता पाएको देखिंदा सरकारी छाप दस्तखत कीर्ते मुद्दा दर्ता भई अनुसन्धान भई रहेकोमा प्रस्तुत मुद्दाको राम कुमार सुबेदी, शोभाकान्त ढकाल हपेन्द्र मणि के सी समेतका सबै प्रतिवादी तथा अनुसन्धानको क्रममा



# प्रस्तुत मुद्दामा देखिएका मूल तथ्यहरू

**क्रमशः...**

- २०४२ साल देखि नै पटक-पटक विभिन्न मितिमा सरकारी छाप दस्तखत किर्ते कसूरको निरन्तरता रहेको, संगठित अपराध निवारण अध्यादेश, २०६९ मिति २०६९/११/०४ गते नेपाल राजपत्रमा प्रकाशित भई लागु भएको र प्रस्तुत कसूर मिति २०७०।०१।२७ गते सम्मका मितिहरूमा निरन्तर भएको ।
- **राम कुमार सुवेदी, शोभाकान्त ढकाल**, **शिवजी भट्टराई** र **हुपेन्द्रमणि के.सी**.(निरौला) समेत ४ जना प्रतिवादीहरुले संगठित रुपमा योजना बनाई बिभिन्न कार्यालयका कर्मचारी र अन्य व्यक्तिहरु समेतलाई प्रयोग गरी २०४९ साल देखि जग्गा फिर्ता, छुट जग्गा दर्ता, प्र.म. निवास बिस्तार र पशुपती टिकिंछा गुठीको नाममा दर्ता सच्याउने ललिता निवास क्याम्प भित्रको जग्गा हिनामिना गरी व्यक्ति विशेषको नाममा दर्ता कायम गरी आर्थिक लाभ लिने कार्यमा सुरु देखि नै प्रत्यक्ष रुपमा संलग्न रहेका ।
- रत्न प्रसाद जोशी, उमा कुमारी ढकाल समेतका ६ जना प्रतिवादीहरू ३ वटा मुद्दामा संलग्न रहेका ।



# साविक ललिता निवास क्याम्प क्षेत्र



# जग्गा फिर्ता पश्चात ललिता निवास क्याम्प क्षेत्र




१:२,०००

# संगठित अपराधमा संलग्न प्रतिवादीहरूको नेटवर्क विश्लेषण













टिकाराम घिमिरे
मालपोत अधिकृत

हुपेन्द्र मणी के.सी
उप-सचिव

प्रेम बहादुरखापुङ
प्र.मा.अ.

रामकृष्ण महर्जन मञ्जुरी दिने

कल्याण गुरुङ हालको जग्गा धनी

निकिता तुलाधर हालको जग्गा धनी

बेखानारायण महर्जन साक्षी

अगम ढुङ्गाना जग्गा धनी

पंच नारायण महर्जन साक्षी

राम कुमार सुवेदी बिचौलिया

सुनितीराणा,मृत्यू जग्गा धनी

शैलजाराणा,मृत्यू मन्जुरी दिने कागजगर्ने जग्गा धनी

शोभाकान्त ढकाल बिचौलिया/ साक्षी

रुक्म शम्शेर ज.ब.रा,मृत्यू मन्जुरी दिने कागजगर्ने जग्गा धनी

निर्मला देवी गोयल जग्गा धनी

मनोज कुमार केडिया हालको जग्गा धनी

खेमलाल खेरल जग्गा धनी

चमेलीश्रेष्ठ, जग्गा धनी

बस नारायण महर्जनसाक्षी

बाल गोपाल घिमिरे साक्षी

हेरामाया महर्जन साक्षी

बाबुराजा महर्जन साक्षी

कान्छा महर्जन साक्षी

मचाम महर्जन साक्षी

रेना गुरुङ साक्षी

मचाकाजी महर्जन साक्षी

ग्वाराभाई महर्जन साक्षी

मचानानी महर्जन साक्षी

नाती महर्जन साक्षी

कृष्ण महर्जन साक्षी

श्रीकृष्ण महर्जन साक्षी

अर्जुन प्रसाद भण्डारी मृत्यु ना.सु.कार्यालय प्रमुख

रुद्र कुमार श्रेष्ठ सह-सचिव

रत्न प्रसाद जोशी वडाअध्यक्ष

शिवजी भट्टराई वडा सचिव

डबल सिंह ठगुन्ना सहायकद्वितीय

नारायण गोपाल मलेगो सह- सचिव

मिन बहादुर गुरुङ जग्गा धनी/ भाटभटेनीडेभलपर्स

द्वारिकामान महर्जन मोही

माधवी सुवेदी बिचौलिया

अंगुर कुमार सिग्देल नायवसुब्बा

लक्ष्मी ढकाल जग्गा धनी

कामना गुरुङ हालकोजग्गा धनी

कल्पना तुलाधर हालकोजग्गा धनी

बाबा कार्की जग्गा धनी

# ललिता निवास जग्गा विश्लेषण Analysis Link Chart



